# नेपाल एजेन्सी ऐन, २०१४

| लालमोहर सदर मिति | | नेपालराजपत्रमा प्रकाशित मिति |
|---|---|---|
| २०१४।११।२ | | २०१४।११।१३ |

| संशोधन गर्ने ऐन | लालमोहर सदर मिति | नेपाल राजपत्रमा प्रकाशित मिति |
|---|---|---|
| १. नेपाल एजेन्सी (संशोधन) ऐन, २०१७ | २०१८।१।१४ | २०१८।१।१६ |
| २. केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन,२०२० | २०२०।११।१६ | २०२०।११।१६ |

## २०१४ सालको ऐन नं. १९

## एजेन्सीसम्बन्धी काम नियन्त्रण गर्ने ऐन

एजेण्ट, डिष्ट्रिव्यूटर, स्टकिष्ट, नोमिनी वा रेप्रिजेण्टेटिभहरुले चीज वस्तुहरुको बिक्रीमा अनुचित फाइदा उठाउन नपाउने गर्नको निमित्त सो कामलाई नियन्त्रण र तत्सम्बन्धी अरु व्यवस्था समेत गरी ■सर्वसाधारण जनताको सुविधा र आर्थिक हित कायम राख्न वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराजबाट यो ऐन बनाई जारी गरिबक्सेकोछ ।

१. **संक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१) यस ऐनको नाम "नेपाल ऐजेन्सी ऐन, २०१४" रहेको छ ।

(२) यो ऐन नेपाल भरमुलुकमा तुरुन्त लागू हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस ऐनमा-

(क) "एजेण्ट" भन्नाले नेपाल भरमुलुक वा त्यसको कुनै इलाकाको निमित्त स्वदेशी वा विदेशी फर्मको ऐजेन्सी लिने व्यक्ति सम्झनु पर्छ र यो शब्दले डिष्ट्रिव्यूटर, स्टकिष्ट, नोमिनी वा रेप्रिजेण्टेटिभ भई काम गर्ने व्यक्ति समेतलाई जनाउँछ ।

(ख) "रजिष्टर्ड एजेण्ट" भन्नाले यस ऐनको दफा ४ बमोजिम एजेण्टमा नाम दर्ता भएको व्यक्ति सम्झनु पर्छ ।

(ग) तोकिएको" वा "तोकिएबमोजिमको" भन्नाले यो ऐन अन्तर्गतको नियम वा आदेशमा तोकिएको वा तोकिएबमोजिमको सम्झनु पर्छ ।

३. **यो ऐनबमोजिम नाम दर्ता नगराई एजेण्ट भई काम गर्न नहुने** : यो ऐन प्रारम्भ भएपछि यो ऐनबमोजिम एजेण्टमा दर्ता नगराई कुनै पनि व्यक्तिले एजेण्ट भई काम गर्न पाउने छैन ।

■ केही नेपाल कानून (संशोधन र पुन: व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

४. **एजेण्टमा नाम दर्ता गर्ने** : (१) यो ऐन प्रारम्भ भएपछि कुनै एजेण्ट हुन चाहने व्यक्तिले एजेण्टमा आफनो नाम दर्ता गराउन तोकिएबमोजिम विवरणहरु खुलाई तोकिएको अधिकारी छेउ दरखास्त दिनुपर्छ ।

(२) उपदफा (१) बमोजिम कसैको दरखास्त पर्न आएमा तोकिएको अधिकारीले तोकिएको दस्तूर र धरौट दाखिल गराई सो दरखास्तवालालाई तोकिएबमोजिमको कबूलियत गराई एजेण्टमा नाम दर्ता गर्न सक्नेछ ।

(३) यस दफा अन्तर्गत एजेण्टमा नाम दर्ता गर्दा नेपालका नागरिकलाई प्राथमिकता दिइनेछ ।

५. **फाँटबारी दाखिल गर्ने** : प्रत्येक रजिष्टर्ड एजेण्टले आएको, बिक्री भएको, मौज्दातमा रहेको चीज वस्तु र त्यसको दर भाउको फाँटबारी तोकिएको ढाँचामा तोकिएको समय समयमा अधिकारी छेउ दाखिल गर्नुपर्छ ।

[#]६. **यो ऐन प्रारम्भ हुनु अघि भई राखेका एजेण्टहरु** : यो ऐन प्रारम्भ हुनुभन्दा अघि नेपाल सरकारबाट एजेन्ट भई काम गर्ने सम्बन्धमा दिई राखेको सबै स्वीकृतिहरु नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी तोकिदिएका म्यादभित्र रिन्यू गराउनुपर्छ । सो म्यादभित्र रिन्यू नभए सो स्वीकृतिहरु कायम रहने छैन ।

७. **कबुलियत उल्लंघन गरेमा हुने दण्ड सजाय** : दफा ४ को उपदफा (२) बमोजिम आफूले गरिराखेको कबुलियत कुनै एजेण्टले उल्लंघन गरेमा नेपाल सरकारले निजलाई पाँच वर्षसम्म एजेण्टको काम गर्न नदिन वा रु.५००।- पाँचसय जरिवाना गर्न सक्नेछ ।

८. **दफा ३ उल्लंघन गरेमा हुने दण्ड सजाय** : कुनै व्यक्तिले दफा ३ उल्लंघन गरेमा नेपाल सरकारले त्यस्ता व्यक्तिलाई रु.१०००।- सम्म जरिवाना गर्न सक्नेछ ।

९. **अरु दण्ड सजाय** : माथि दफा दफामा तोकिएकमोजिमका दण्ड सजायहरुमा कुनै प्रतिकूल प्रभाव नपारी यो ऐन वा यस ऐन अन्तर्गतका आदेश वा नियमका कुनै कुरा उल्लंघन गर्ने व्यक्तिलाई नेपाल सरकारले २ वर्षसम्म एजेण्टको काम गर्न नदिने वा रु.२००।- सम्म जरिवाना गर्न सक्नेछ ।

१०. **आदेश जारी गर्ने तथा नियम बनाउने अधिकार** : (१) यस ऐनको उद्देश्य कार्यान्वित गर्न नेपाल सरकारले समय समयमा आदेश जारी गर्न तथा नियमहरु बनाउन सक्नेछ ।

---

[#] नेपाल एजेन्सी (संशोधन) ऐन, २०१७ द्वारा संशोधित ।

(२) उपदफा (१) ले दिएको अधिकारको सर्वसामान्यतामा कुनै प्रतिकूल प्रभाव नपारी खास गरेर ती आदेश तथा नियमहरुमा देहायका विषयहरुको व्यवस्था गर्न सकिनेछ :–

(क) यो ऐनबमोजिमको अधिकारी तोक्ने ।

(ख) एजेण्टमा नाम दर्ता गराउन दिने दरखास्तमा खुलाउनु पर्ने विवरण ।

(ग) कबुलियतको ढाँचा ।

(घ) एजेण्टमा नाम दर्ता गराउन दाखिल गर्नु पर्ने दस्तुर ।

(ङ) एजेण्ट भई काम गर्ने अवधि, सो रिन्यू गर्ने र रिन्यू गराउँदा दाखिल गर्नु पर्ने दस्तुर ।

(च) रजिष्टर्ड एजेण्टले आएको, बिक्री भएको र मौज्दातमा रहेको चीज वस्तु र त्यसको दर भाउको फाँटवारी तोकिएको अधिकारी छेउ दाखिल गर्नु पर्ने समय र त्यसको फाँटवारीको ढाँचा ।

(छ) दफा ४ को उपदफा (१) बमोजिम दिएको विवरणमा केही संशोधन तथा थपघट गर्न वा दफा ४ को उपदफा (२) बमोजिम भएको कबुलियतमा हेरफेर गर्नुपर्दाको कार्यविधि, र

(ज) रजिष्टर्ड एजेण्टले दफा ५ बमोजिम आफूले दाखिल गरेको फाँटबारी बमोजिमको दर भाउमा थपघट गर्नुपर्दाको कार्यविधि ।

११. **खारेजी** : १९९२ साल श्रावण १० गतेको इस्तिहार खारेज गरिएको छ ।

---

**द्रष्टव्यः**- (१) नेपाल अन्तरिम शासन विधान (चौथो संशोधन) २०१५ द्वारा रुपान्तर भएको शब्द :-
“सरकार” को सट्टा “श्री ५ को सरकार” ।

(२) केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ ले देहायको शब्दको सट्टा देहायको शब्द राखी रुपान्तरण गरेको छ :
”श्री ५ को सरकार” भन्ने शब्दको सट्टा “नेपाल सरकार” ।